# नेपाल राजपत्र

नेपाल सरकारद्वारा प्रकाशित

खण्ड ६२) काठमाडौं, बैशाख १ गते २०६९ साल -अतिरिक्ताकं १)


## भाग २

**पूर्व पदाधिकारीहरुलाई सुविधा तथा सुरक्षा प्रदान गर्ने सम्बन्धमा व्यवस्था गर्न वनेको अध्यादेश**

प्रस्तावना : मुलुकलाई महत्वपूर्ण सेवा तथा योगदान पुऱ्याएका व्यक्तिहरुलाई ओहदामा वहाल नरहे पनि आवश्यक सुविधा तथा सुरक्षा प्रदान गर्न तत्काल आवश्यक भएको र हाल व्यवस्थापिका-संसदको अधिवेशन नभएकोले,

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ८८ को उपधारा (१) बमोजिम राष्ट्रपतिबाट यो अध्यादेश जारी भएकोछ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस अध्यादेशको नाम "पूर्व पदाधिकारीहरुको सुविधा तथा सुरक्षा सम्बन्धी अध्यादेश, २०६९" रहेकोछ ।

(२) यो अध्यादेश तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस अध्यादेशमा,-

(क) "पूर्व पदाधिकारी" भन्नाले सम्बत् २०४६ साल पछि नियुक्ति भई ओहदामा वहाल नरहेका निवृत्त राष्ट्रपति, उपराष्ट्रपति, प्रधानमन्त्री, प्रधान न्यायाधीश वा सभामुख सम्झनु पर्छ ।

(ख) "विशिष्ट व्यक्ति" भन्नाले राष्ट्रको विकास र मर्यादा कायम राख्न वा लोकतन्त्रको सुदृढिकरणमा उल्लेखनीय सेवा तथा योगदान पुऱ्याएको आधारमा नेपाल सरकारले तोकेको व्यक्ति सम्झनु पर्छ ।

३. **आवास सुविधा** : पूर्व राष्ट्रपति, पूर्व उपराष्ट्रपति र पूर्व प्रधानमन्त्रीको लागि नेपाल सरकारले मापदण्ड बनाई आवास सुविधा उपलब्ध गराउनेछ ।

४. **सवारी साधन तथा ईन्धन सुविधा** : (१) नेपाल सरकारले पूर्व पदाधिकारीलाई मापदण्ड बनाई चालक सहित सवारी साधन एक र अनुसूचीमा उल्लेख भए बमोजिमको ईन्धन उपलब्ध गराउनेछ ।

(२) यस दफा बमोजिम पूर्व पदाधिकारीलाई उपलब्ध गराईएको सवारी साधनको मर्मत र सम्भारको लागि नेपाल सरकारले तोके बमोजिम एकमुष्ट रकम उपलब्ध गराईनेछ ।

५. **निजी सचिवालय र कर्मचारीको व्यवस्था** : (१) नेपाल सरकारले देहायका पूर्व पदाधिकारीको निजी सचिवालयको लागि देहाय बमोजिमका कर्मचारीहरु उपलब्ध गराउनेछ :-

(क) पूर्व राष्ट्रपतिको लागि निजामती सेवाको राजपत्राङ्कित तृतीय श्रेणीको अधिकृत एक जना, राजपत्रअनङ्कित प्रथम श्रेणीको एक जना र श्रेणीविहीन स्तरको दुई जना कर्मचारी,

(ख) पूर्व उपराष्ट्रपति र पूर्व प्रधानमन्त्रीको लागि निजामती सेवाको राजपत्राङ्कित तृतीय श्रेणीको अधिकृत एक जना र श्रेणीविहीन स्तरको एकजना कर्मचारी,

(ग) पूर्व प्रधान न्यायाधीश र पूर्व सभामुखको लागि निजामती सेवाको राजपत्रअनङ्कित प्रथम श्रेणीको एक जना कर्मचारी ।

(२) निजी सचिवालयको लागि मसलन्द तथा अतिथि सत्कारको निमित्त नेपाल सरकारले तोके बमोजिमको रकम उपलब्ध गराईनेछ ।

६. **सुरक्षाको व्यवस्था** : (१) पूर्व पदाधिकारीको सुरक्षाको निमित्त नेपाल सरकारले आवश्यक सङ्ख्यामा सुरक्षा कर्मचारीको व्यवस्था गर्नेछ ।

(२) सम्वत् २०४६ साल पछि नियुक्त भई ओहदामा वहाल नरहेको पूर्व गृहमन्त्रीको सुरक्षा संवेदनशिलतालाई दृष्टिगत गरी गृहमन्त्रीबाट निवृत्त

भएको मितिले बढीमा तीन वर्षको लागि नेपाल सरकारले तोके बमोजिमको ईन्धन सुविधा तथा चालक सहितको सवारी साधन र सुरक्षा प्रदान गर्न सक्नेछ ।

तर सेवा निवृत्त भएको तीन वर्ष अवधि व्यतित भई सकेको पूर्व गृहमन्त्रीलाई समेत निजको सुरक्षा संवेदनशिलतालाई दृष्टिगत गरी यस दफा बमोजिमको सुविधा प्रदान गर्न बाधा पर्ने छैन ।

७. **औषधि उपचारको व्यवस्था** : (१) पूर्व पदाधिकारीलाई स्वदेशको सरकारी अस्पतालमा भर्ना हुँदा र उपचार गराउँदा लागेको अस्पतालको बिल बमोजिमको उपचार खर्च र चिकित्सकको प्रेस्क्रिप्सन बमोजिम खरिद गरेको औषधि खर्च वापतको रकम उपलब्ध गराइनेछ ।

(२) विशिष्ट व्यक्तिलाई नेपाल सरकारले उचित ठहऱ्याएको औषधि उपचारको रकम उपलब्ध गराईनेछ ।

८. **विशिष्ट व्यक्तिलाई सुविधा उपलब्ध गराईने** : (१) सत्तरी वर्ष उमेर पुगेको र आर्थिक अवस्था कमजोर भएको विशिष्ट व्यक्तिलाई मापदण्ड बनाई नेपाल सरकारले देहाय बमोजिमको सुविधा उपलब्ध गराउनेछ :-

(क) आवास,

(ख) चालक सहित एक सवारी साधन,

(ग) नेपाल सरकारले तोके बमोजिम मासिक ईन्धन र सवारी साधन मर्मत तथा सम्भारको लागि एकमुष्ट वार्षिक रकम ।

(२) उपदफा (१) को खण्ड (क) मा जुनसुकै कुरा लेखिएको भए तापनि विशिष्ट व्यक्तिको वा निजको एकासगोलको परिवारको नाउँमा काठमाण्डौ उपत्यकामा घर भए त्यस्तो विशिष्ट व्यक्तिलाई आवास सुविधा उपलब्ध गराईने छैन ।

९. **सुविधा प्रदान गर्ने** : (१) नेपाल सरकारले यस अध्यादेश बमोजिम प्रदान गर्ने सुविधा देहायका पूर्व पदाधिकारीहरुलाई देहायका निकाय मार्फत प्रदान गर्नेछ :-

(क) पूर्व राष्ट्रपतिको लागि राष्ट्रपतिको कार्यालय,

(ख) पूर्व उपराष्ट्रपतिको लागि उपराष्ट्रपतिको कार्यालय,

(ग) पूर्व प्रधानमन्त्रीको लागि गृह मन्त्रालय,

(घ) पूर्व प्रधान न्यायाधीशको लागि सर्वोच्च अदालत,

(ङ) पूर्व सभामुखको लागि व्यवस्थापिका-संसद सचिवालय, र

(च) पूर्व गृहमन्त्री र विशिष्टि व्यक्तिको लागि गृह मन्त्रालय ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि दफा ६ बमोजिमको सुरक्षाको व्यवस्था गृह मन्त्रालयले गर्नेछ ।

१०. **सुविधा प्राप्त नहुने** : यस अध्यादेशमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि पूर्व पदाधिकारीले देहायको अवस्थामा यस अध्यादेश बमोजिम सुविधा पाउने छैन :-

(क) सरकारी वा संवैधानिक पदमा नियुक्त भई त्यस्तो पदमा बहाल रहेसम्म,

(ख) महाअभियोगको प्रस्ताव पारित भई पदबाट मुक्त भएमा,

(ग) नैतिक पतन देखिने फौजदारी अभियोगमा अदालतबाट कसूरदार ठहरिएमा ।

११. **सुविधा दुरुपयोग गर्न नहुने** : यस अध्यादेश बमोजिम प्राप्त सुविधाको कसैले पनि दुरुपयोग गर्न वा गराउन हुँदैन ।

१२. **हेरफेर तथा थपघट गर्न सक्ने** : (१) पूर्व पदाधिकारीले यस अध्यादेश बमोजिम पाउने सुविधामा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी समय समयमा आवश्यक हेरफेर तथा थपघट गर्न सक्नेछ ।

(२) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी अनुसूचीमा आवश्यक हेरफेर गर्न सक्नेछ ।

अनुसूची

(दफा ४ सँग सम्बन्धित)

| क्र. स. | पद | सुविधाको विवरण प्रति महिना | परिमाण |
|---|---|---|---|
| १ | पूर्व राष्ट्रपति | पेट्रोल/डिजेल | २०० लिटर |
| २ | पूर्व उपराष्ट्रपति | पेट्रोल/डिजेल | १७५ लिटर |
| ३ | पूर्व प्रधानमन्त्री | पेट्रोल/डिजेल | १५० लिटर |
| ४ | पूर्व प्रधान न्यायाधीश र पूर्व सभामुख | पेट्रोल/डिजेल | १०० लिटर |

**प्रमाणीकरण मिति :** २०६९/०१/०६